# पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८ (नमूना / मस्यौदा)

**प्रस्तावना** : नेपालको संविधान २०७२ धारा १२ ले व्यवस्था गरे बमोजिम पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूले आफ्नो लैङ्गिक पहिचान अनुसारको नागरिकता प्रमाणपत्र लगायत वैयक्तिक कागजात कायम गर्न पाउने अधिकारको निर्वाध प्रयोग गर्न गराउन एवं यस अदालतबाट प्रतिपादन भएका लैङ्गिक पहिचान सम्बन्धी आदेश, फैसला तथा नजीर साथै पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूको लैङ्गिक पहिचानसँग सम्बन्धित नेपालको संविधान २०७२ का मौलिक हकहरू कार्यन्वयन गर्नका लागि कानून निर्माण नभएसम्म निर्देशिका जारी हुनु वाञ्छनीय भएकाले,

सर्वोच्च अदालतले *पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८* जारी गरेको छ ।

**<u>१. संक्षिप्त नाम र प्रारम्भ :</u>** (१) यस निर्देशिकाको नाम “पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८” रहेको छ ।

(२) यो निर्देशिका जारी भएको मितिले १६औं दिनबाट प्रारम्भ हुनेछ ।

**<u>२. परिभाषा :</u>** विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस निर्देशिकामा,—

(१) "जन्मँदा इङ्गित लैङ्गिकता" (Gender assigned at birth) भन्नाले कुनै शिशु जन्मे पश्चात् निजको यौनाङ्ग अनुसार शिश्न (लिङ्ग) भएमा पुरुष वा योनी भएमा महिला र कतिपय अवस्थामा अस्पष्ट वा दुबै यौनाङ्ग भएका शिशुहरूमा अभिभावकको इच्छा अनुसार गरिएको लैङ्गिकता निर्धारण भनि बुझ्नुपर्छ ।

(२) "पारलैङ्गिक पुरुष" (Trans man) भन्नाले जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएको पुरुष भनि बुझ्नुपर्छ ।

(३) "पारलैङ्गिक महिला" (Trans woman) भन्नाले जन्मँदा पुलिङ्गी इङ्गित गरिएकी महिला भनि बुझ्नुपर्छ ।

(४) "पारलैङ्गिक व्यक्ति" (Transgender person) भन्नाले जन्मँदा इङ्गित गरिएको लैङ्गिकता भन्दा विपरीतको लैङ्गिक पहिचान भएका व्यक्ति अर्थात् पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुष भनि बुझ्नुपर्छ ।

(५) "लैङ्गिक पहिचान" (Gender Identity) भन्नाले व्यक्तिको स्वःअनुभूतीको लैङ्गिकता अर्थात् व्यक्तिको लैङ्गिकता सम्बन्धी व्यक्तिगत अनुभूति भनि बुझ्नुपर्छ ।

(६) "वैयक्तिक कागजात" भन्नाले नागरिकता प्रमाणपत्र, जन्म दर्ता, शैक्षिक प्रमाणपत्रहरू, राष्ट्रिय परिचयपत्र, मतदाता परिचयपत्र, जग्गाधनी पूर्जा, घरधनी पूर्जा, सवारी चालक अनुमतीपत्र, सवारी दर्ता प्रमाणपत्र, राहदानी, अपाङ्गता परिचयपत्र लगायत सरकारी, अर्ध-सरकारी, गैर-सरकारी तथा निजी निकाय एवं संस्थाहरूले प्रदान गरेको परिचयपत्र, प्रमाणपत्र तथा कागजात भनि सम्झनुपर्छ ।

(७) "वैयक्तिक लैङ्गिक इतिहास" (Personal gender history) भन्नाले कुनै पारलैङ्गिक व्यक्तिले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसार जीवनयापन गर्नअघिका तस्बीर, भिडियो लगायतका दृश्यक सामग्रीहरू, व्यक्तिको मृतनाम, जन्मँदा इङ्गित गरिएको लैङ्गिकता सम्बन्धी विवरण भनि सम्झनुपर्छ ।

(८) "मृतनाम" (Deadname) भन्नाले कुनै पारलैङ्गिक व्यक्तिलाई शिशु अवस्थामा राखिदिएको जन्मँदा इङ्गित गरिएको लैङ्गिकताको प्रतिनिधित्व गर्ने नाम र निज व्यक्तिले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसार जीवनयापन गरिसकेपछि त्याग गरेको वा आफ्नो लैङ्गिक पहिचानको सही प्रतिनिधित्व गर्ने नामबाट प्रतिस्थापन भएको नाम भनि बुझ्नुपर्छ ।

(९) "लैङ्गिक दुस्बोधन" (Misgendering) भन्नाले कुनै पारलैङ्गिक व्यक्तिलाई उसको लैङ्गिक पहिचान प्रतिकूलको लैङ्गिकताबोधक शब्दावलीले सम्बोधन गर्ने कार्य भनि बुझ्नुपर्छ ।

## परिच्छेद २

## लैङ्गिक पहिचानको हक

**३. लैङ्गिक पहिचानको हक :** (१) पारलैङ्गिक व्यक्तिलाई आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसार जीवनयापन गर्ने अधिकार हुनेछ ।

(२) पारलैङ्गिक व्यक्तिलाई आफ्नो लैङ्गिक पहिचान सहितको स्वतन्त्र व्यक्तित्व बिकासको अधिकार हुनेछ ।

(३) पारलैङ्गिक व्यक्तिलाई आफ्नो लैङ्गिक पहिचान सहितको परिचय स्थापित गर्ने अधिकार हुनेछ ।

(४) पारलैङ्गिक व्यक्तिलाई आफ्नो शारीरिक निष्ठा तथा स्वायत्तताको अधिकार हुनेछ ।

**४. लैङ्गिक पहिचान सहितको कानूनी पहिचानको अधिकार :** (१) पारलैङ्गिक व्यक्तिलाई नीजको वैयक्तिक कागजातहरू लैङ्गिक पहिचानअनुसार प्राप्त गर्ने अधिकार हुनेछ ।

(२) उपदफा (१) बमोजिम पारलैङ्गिक महिलालाई नीजको वैयक्तिक कागजातहरू लैङ्गिक पहिचानअनुसार महिला उल्लेख गरी प्राप्त गर्ने अधिकार हुनेछ ।

(३) उपदफा (१) बमोजिम पारलैङ्गिक पुरुषलाई नीजको वैयक्तिक कागजातहरू लैङ्गिक पहिचानअनुसार पुरुष उल्लेख गरी प्राप्त गर्ने अधिकार हुनेछ ।

(४) पारलैङ्गिक व्यक्तिलाई जन्मँदा इङ्गित गरिएको लैङ्गिकताका आधारमा प्राप्त भएको वैयक्तिक कागजात संशोधन गरी लैङ्गिक पहिचानअनुसार कायम गर्ने अधिकार हुनेछ ।

(५) उपदफा (४) बमोजिम पारलैङ्गिक महिलालाई जन्मँदा इङ्गित गरिएको लैङ्गिकताका आधारमा पुरुष उल्लेख भई प्राप्त भएको वैयक्तिक कागजात संशोधन गरी लैङ्गिक पहिचानअनुसार महिला कायम गर्ने अधिकार हुनेछ ।

(६) उपदफा (४) बमोजिम पारलैङ्गिक पुरुषलाई जन्मँदा इङ्गित गरिएको लैङ्गिकताका आधारमा महिला उल्लेख भई प्राप्त भएको वैयक्तिक कागजात संशोधन गरी लैङ्गिक पहिचानअनुसार पुरुष कायम गर्ने अधिकार हुनेछ ।

(७) उपदफा (४) बमोजिम पारलैङ्गिक व्यक्तिलाई कानूनको अभावमा अन्यलिङ्गी उल्लेख वा कायम भई प्राप्त भएको वैयक्तिक कागजात संशोधन गरी लैङ्गिक पहिचानअनुसार कायम गर्ने अधिकार हुनेछ ।

**<u>५. नाम परिवर्तनको अधिकार :</u>** (१) पारलैङ्गिक व्यक्तिलाई दफा (४) बमोजिम वैयक्तिक कागजात संशोधन गर्दा नीजको नामले नीजको लैङ्गिक पहिचानको सही प्रतिनिधित्व गरेको नलागेमा नीजको लैङ्गिक पहिचानको सही प्रतिनिधित्व हुने गरी नाम परिवर्तन गर्ने अधिकार हुनेछ ।

(२) उपदफा (१) बमोजिम नामको छनोट गर्ने अधिकार नीज व्यक्ति स्वयंको हुनेछ ।

(३) उपदफा (१) बमोजिम नाम परिवर्तन गरिसकेपश्चात् परिवर्तनपूर्वको नाम मृतनाम ठहर हुनेछ ।

(४) उपदफा (३) बमोजिम मृतनाम ठहर भएको नाम नीज व्यक्तिलाई चिन्न चिनाउन वा सम्बोधनका लागि प्रयोग गर्न बाध्य बनाउन पाइने छैन ।

**<u>६. आत्मनिर्णयको अधिकार हुने :</u>** (१) पारलैङ्गिक व्यक्तिलाई आफ्नो लैङ्गिक पहिचानमा आत्मनिर्णयको अधिकार हुनेछ ।

**<u>७. लैङ्गिक पहिचान अनुसार सम्बोधन गर्नुपर्ने :</u>** (१) पारलैङ्गिक व्यक्तिलाई सम्बोधन गर्दा नीजको लैङ्गिक पहिचान अनुरूपको शब्दावली तथा भाषा प्रयोग गरी सम्बोधन गरिनुपर्छ ।

(२) यस निर्देशिका बमोजिम आफ्नो वैयक्तिक कागजातमा लैङ्गिक पहिचान कायम गर्न निवेदन दिएमा उक्त कार्यवाहीमा समेत नीजले संशोधन मार्फत् हटाउन चाहेको नाम तथा लैङ्गिक विवरण अनुसार सम्बोधन गर्नुहुँदैन र कायम गर्न चाहेको नाम तथा लैङ्गिक विवरण अनुसार सम्बोधन गरिनुपर्छ ।

(३) उपदफा (१) मा जेसुकै लेखिएको भएतापनि कुनै व्यक्तिलाई लैङ्गिक तटस्थ शब्द शब्दावलीले सम्बोधन गर्दा अन्यथा मानिने छैन ।

**८. गोपनीयताको हक :** (१) पारलैङ्गिक व्यक्तिलाई आफ्नो वैयक्तिक लैङ्गिक इतिहास सम्बन्धी गोपनीयताको हक हुनेछ ।

(२) पारलैङ्गिक व्यक्तिलाई आफ्नो लैङ्गिक पहिचानसँग सम्बन्धित चिकित्सकीय विवरणउपर गोपनीयताको हक हुनेछ ।

(३) यस निर्देशिका बमोजिम लैङ्गिक पहिचानको अधिकार उपभोगार्थ बुझाइएका वा पेश गरिएका निवेदन, पत्राचार तथा लिखितहरूउपर गोपनीयताको हक हुनेछ ।

(४) उपदफा (१), (२) र (३) बमोजिमका कुनै पनि विषय लेखेर, बोलेर, प्रकाशन गरेर जुनसुकै माध्यम प्रयोग गरेर वा अन्य कुनै प्रकारले नीज व्यक्तिको मञ्जुरी बेगर सार्वजनिक गराउनु हुँदैन ।

(५) उपदफा (१), (२) र (३) बमोजिम पारलैङ्गिक व्यक्तिको विवरणहरू सार्वजनिक हुन गएमा सम्बन्धित व्यक्तिले त्यस्ता सामग्री हटाइपाऊँ भनी निवेदन दिएमा त्यस्तो विवरणलाई सार्वजनिक गरेको व्यक्ति, संस्था, संगठन वा निकायले त्यसरी सार्वजनिक गरेका सम्पूर्ण विवरण सबै माध्यमहरूबाट हटाउनुपर्नेछ र त्यसो नगरेमा प्रचलित कानून बमोजिम कारवाही गरिनेछ ।

(६) यस निर्देशिका बमोजिम वैयक्तिक कागजात संशोधन वा अन्य जुनसुकै कार्य गर्दा गोपनीयतालाई सुनिश्चित गर्नुपर्नेछ ।

(७) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भएतापनि देहायको अवस्थामा गोपनीयताको खुलासा गर्न सकिनेछ :—

(क) सम्बन्धित व्यक्तिको मञ्जुरी भएमा,

(ख) सम्बन्धित व्यक्तिले नै आफूखुशीले सार्वजनिक गरेको भएमा,

(ग) सम्बन्धित निकायलाई कुनै फौजदारी कसूरको अनुसन्धानका सिलसिलामा सो जानकारी आवश्यक भएमा सो अनुसन्धानसँग सम्बन्धित प्रयोजनका लागि ।

(८) कसैले पनि पारलैङ्गिक व्यक्तिलाई नीजले आफ्नो स्वःअनुभूतिको लैङ्गिक पहिचान अनुसार जीवनयापन गर्नुपूर्व चिनेका आधारमा नीजको वैयक्तिक लैङ्गिक इतिहास सार्वजनिक गर्ने वा खुलाउन पाउने छैन ।

## परिच्छेद ३
## लैङ्गिक पहिचानको हकको उपभोग

**९. लैङ्गिक पहिचानको हकको उपभोग :** (१) पारलैङ्गिक व्यक्तिले आफ्नो लैङ्गिक पहिचानसहितको परिचय स्थापित गर्नका लागि लैङ्गिक विवरण वा नाम सहित लैङ्गिक विवरण संशोधन गर्न स्थायी बसोबास भएको वडा कार्यालयसमक्ष निवेदन दिनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम पेश गरिने निवेदनमा निवेदकले :-

(क) पारलैङ्गिक महिला वा पारलैङ्गिक पुरुष रहेको व्यहोरा उल्लेख गर्नुपर्नेछ;

(ख) संशोधन गरी कायम गर्न चाहेको लैङ्गिक विवरण उल्लेख गर्नुपर्नेछ;

(ग) नाम सहित संशोधन गरी कायम गर्न चाहेको भए कायम गर्न चाहेको नाम उल्लेख गर्नुपर्नेछ;

(घ) नीजले हालसम्म प्राप्त गरेको सबै वैयक्तिक कागजातहरू कुनै नछुट्याई सूची बनाएर उल्लेख गर्नुपर्नेछ ;

(ङ) नीजले हालसम्म प्राप्त गरेको सबै वैयक्तिक कागजातहरूको प्रतिलिपि एक प्रति संलग्न गर्नुपर्नेछ ;

(च) नीजले प्रयोग गर्दै आएका बैंक तथा वित्तिय संस्थाहरूको खाताको विवरण उल्लेख गर्नुपर्नेछ ।

(३) उपदफा (१) बमोजिम प्राप्त भएको निवेदनमा वडा कार्यालयले ७ दिन भित्र निवेदकको माग बमोजिम लैङ्गिक विवरण वा नाम सहित लैङ्गिक विवरण संशोधन भएको सिफारिस जारी गर्नुपर्नेछ ।

(४) उपदफा (३) बमोजिम वडा कार्यालयले जारी गरेको सिफारिसका आधारमा सर्वप्रथम जन्म दर्ता प्रमाणपत्र संशोधन गर्नुपर्नेछ । जन्म दर्ता प्रमाणपत्र संशोधन भएको आधारमा क्रमशः कक्षा ८, कक्षा १० र कक्षा ११/१२ लगायत विद्यालय तहका बोर्ड परीक्षाका शैक्षिक प्रमाणपत्रहरू संशोधन गर्नुपर्छ । जन्म दर्ता र शैक्षिक प्रमाणपत्र संशोधन भएको आधारमा नागरिकता प्रमाणपत्र संशोधन गर्नुपर्छ

। नागरिकता प्रमाणपत्र संशोधन भएको आधारमा नागरिकता प्रमाणपत्र अनुसार बन्ने राहदानी, मतदाता परिचयपत्र, सवारी चालक अनुमतीपत्र, जग्गाधनी पुर्जा लगायतका सम्पूर्ण कागजातहरू संशोधन गर्नुपर्छ । विद्यालय तहका शैक्षिक प्रमाणपत्र संशोधन भएको आधारमा विश्वविद्यालय तहका शैक्षिक प्रमाणपत्र संशोधन गर्नुपर्छ । बैंक, सहकारी लगायतका बित्तीय संस्थानले खाता विवरण संशोधन गर्नुपर्छ । वडा कार्यालयको सिफारिस बमोजिम सरकारी एवं गैर-सरकारी जुनसुकै निकाय संस्थाले विवरण संशोधन गर्नुपर्छ ।

(५) उपदफा (४) बमोजिम संशोधनका लागि निवेदन प्राप्त भएको सकेसम्म सोही दिन वा बढीमा ७ दिनभित्र संशोधन गरिसक्नुपर्नेछ ।

(६) उपदफा (४) बमोजिम संशोधन भइसकेपछि उक्त वैयक्तिक कागजातको सक्कलै प्रति खिची संशोधन अनुसारको विवरण सहित अर्को सक्कल प्रदान (re-issue) गर्नुपर्नेछ ।

(७) उपदफा (४) बमोजिम संशोधन भई अर्को कागजात प्रदान गर्दा खाता नम्बर, परिचयपत्र नम्बर, प्रमाणपत्र नम्बर वा रजिष्ट्रेशन नम्बर लगायत व्यक्ति विशेषलाई इङ्गित हुने संकेत नम्बर परिवर्तन गरिनेछैन ।

(८) उपदफा (४) र (७) बमोजिम कार्यवाही पूरा गरी निवेदकको सम्पूर्ण वैयक्तिक कागजात संशोधन भई अर्को कागजात प्राप्त भएपछि ती कागजातहरूको प्रतिलिपि वडा कार्यालयमा बुझाउनुपर्नेछ ।

(९) उपदफा (८) बमोजिम निवेदकले कागजातको प्रतिलिपि बुझाउँदा उपदफा २ (घ), (ङ) र (च) अनुसार सूचीकृत सम्पूर्ण वैयक्तिक कागजातहरू संशोधन भएको छ वा छैन भन्ने बुझी छ भने वडा कार्यालयले रुजु गर्नुपर्नेछ ।

(१०) उपदफा (९) बमोजिम रुजु भएपछि प्रक्रिया टुङ्गिएको मानिनेछ ।

(११) उपदफा (१०) बमोजिम टुङ्गो लागिसकेपछि नीज व्यक्तिले संशोधन पश्चात् प्राप्त गरेको लैङ्गिक विवरण वा नाम सहित लैङ्गिक विवरण नै नीज व्यक्तिको एक मात्र परिचय कायम हुनेछ र संशोधन मार्फत् हटाइएको लैङ्गिक विवरण वा नाम सहित लैङ्गिक विवरणले नीज व्यक्तिले र नीज व्यक्तिलाई चिन्न चिनाउन पाइने छैन ।

**१०. अभिलेख सच्याउनु पर्ने :** (१) दफा ९ को उपदफा (६) बमोजिम वैयक्तिक कागजात संशोधन गर्दा सम्बन्धित निकायले आफ्नो अभिलेखमा पनि सच्याउनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम अभिलेख संशोधन गरिसकेपछि सम्बन्धित निकायले पुरानो विवरण मेटाउनुपर्नेछ ।

(३) दफा ११ बमोजिम संशोधनपूर्वको विवरण राख्ने अधिकार सम्बन्धित नगरपालिका वा गाउँपालिकालाई मात्र हुनेछ ।

**११. अभिलेख राख्नुपर्ने :** (१) यस निर्देशिका बमोजिम भएका कार्यवाहीसम्बन्धीका दस्तावेजहरूको छुट्टै अभिलेख राख्नुपर्नेछ ।

(२) सम्बन्धित निकायले उपदफा (१) बमोजिमको अभिलेख कार्यवाही भएको ५ वर्ष सम्म राख्न सक्नेछ ।

(३) उपदफा (२) मा जेसुकै लेखिएको भएतापनि वडा कार्यालयको हकमा उपदफा (१) बमोजिमको अभिलेख प्रत्येक आर्थिक वर्षको अन्त्यमा वडा कार्यालयले सम्बन्धित नगरपालिका वा गाउँपालिका कार्यपालिकाको कार्यालयमा पठाउनुपर्छ ।

(४) सम्बन्धित नगरपालिका वा गाउँपालिका कार्यपालिकाको कार्यालयले उपदफा (३) बमोजिम प्राप्त भएको अभिलेखको व्यवस्थापन गर्नुपर्नेछ ।

(५) यस निर्देशिका बमोजिमका अभिलेखहरू गोप्य राख्नुपर्नेछ र अदालतको आदेश नभएसम्म विवरणमा पहुँच राख्नु हुँदैन ।

(६) यस दफामा जेसुकै लेखिएको भएतापनि यस निर्देशिका बमोजिम भएको कार्यवाहीमा व्यक्तिगत पहिचान नखुल्ने गरी तथ्याङ्कगत विवरण बनाई सम्बन्धित नगरपालिका वा गाउँपालिकाले प्रकाशन गर्न सक्नेछ ।

**१२. आपराधिक विवरण हस्तान्तरण हुने :** (१) यस निर्देशिका बमोजिम वैयक्तिक कागजात संशोधन भएपछि नीज व्यक्तिको आपराधिक विवरणहरू पनि संशोधन मार्फत् कायम भएको लैङ्गिक विवरण वा नाम सहित लैङ्गिक विवरणमा अद्यावधिक गरेर हस्तान्तरण हुनेछ ।

(२) दफा ९ को उपदफा (४) बमोजिम नागरिकता प्रमाणपत्र संशोधन भइसकेपछी उपदफा (३) बमोजिम जारी भएको सिफारिस पत्र सहित जिल्ला प्रशासन कार्यालयले नीज व्यक्तिको नाममा रहेको फौजदारी आपराधिक विवरणहरूलाई हस्तान्तरण गर्न प्रहरी प्रशासनलाई पत्राचार गर्नुपर्नेछ ।

(३) उपदफा (२) बमोजिमको पत्राचार प्राप्त भएपछि प्रहरी प्रशासनले नीजको नाममा कुनै आपराधिक विवरण रहेको नरहेको बुझी त्यस्तो विवरण रहेमा सिफारिस पत्र अनुसार संशोधन मार्फत् कायम भएको लैङ्गिक विवरण वा नाम सहित लैङ्गिक विवरणमा हस्तान्तरण गर्नुपर्नेछ ।

(४) उपदफा (३) बमोजिम आपराधिक विवरण रहेको नरहेको व्यहोरा उल्लेख गरी त्यस्तो विवरण रहेमा सिफारिस पत्रअनुसार संशोधित विवरणमा हस्तान्तरण गरेको प्रहरी प्रशासनले जिल्ला प्रशासन कार्यालयलाई सूचना दिनुपर्नेछ ।

**१३. पुरानो कागजात खारेज गर्नुपर्ने :** (१) यस निर्देशिका बमोजिम निवेदकले वैयक्तिक कागजात संशोधन गरिसकेपछि संशोधन पूर्वको कागजातलाई सम्बन्धित निकायले खारेज गर्नुपर्छ ।

(२) दफा ११ को उपदफा (२) बमोजिम सम्बन्धित निकायले ५ वर्ष पश्चात् अभिलेख धुल्याउनु पर्नेछ ।

(३) उपदफा (२) मा जेसुकै लेखिएको भएतापनि नगरपालिका वा गाउँपालिका कार्यपालिकाको कार्यालयमा रहेको अभिलेखबाट दफा ९ को उपदफा (३) बमोजिम जारी भएको सिफारिस बाहेकका दस्तावेजहरू मात्र धुल्याउनु पर्नेछ ।

(४) दफा ९ को उपदफा (३) बमोजिम जारी भएको सिफारिस पनि धुल्याउन चाहेमा यस निर्देशिका बमोजिम कार्यवाही भएको ५ वर्ष पछी धुल्याइपाऊँ भनि निवेदन दिन सकिनेछ ।

(५) उपदफा (४) बमोजिम निवेदन परेमा नगरपालिका वा गाउँपालिकाको अधिकारीले उक्त अभिलेख राखिराख्नुपर्ने सान्दर्भिकता छ वा छैन भनि बुझी मनासिब लागेमा सो सिफारिसको अभिलेख पनि धुल्याउन सक्नेछ ।

**१४. विदेशको हकमा विशेष व्यवस्था :** (१) विदेशमा बसोबास गरिरहेका नेपाली नागरिकहरूले यस निर्देशिका बमोजिम लैङ्गिक पहिचान कायम गर्न चाहेमा उक्त देश स्थित नेपाली राजदूतावास मार्फत् निवेदन दिएर राहदानी संशोधन गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम राहदानी संशोधन गरिसकेपछी निजको नेपालमा स्थायी बसोबास रहेको जिल्लाको जिल्ला प्रशासन कार्यालय तथा हाल बसोबास गरिरहेको देश स्थित अध्यागमन निकायलाई सम्बन्धित नेपाली राजदूतावास कार्यालयले उक्त संशोधनको जानकारी गराउनुपर्छ ।

(३) यस दफा बमोजिम प्राप्त गरेको निवेदन तथा पत्राचार जिल्ला प्रशासन कार्यालयले छुट्टै अभिलेख राख्नुपर्छ र नेपाल स्थित अध्यागमन विभागलाई नीज व्यक्तिको राहदानी विवरण सहित सूचित गराउनुपर्छ ।

(४) नीज व्यक्ति नेपाल फर्कने बित्तिकै नियमानुसार सबै कागजात संशोधन गर्नुपर्छ ।

(५) अन्यत्र देशमा अध्ययन गरी शैक्षिक प्रमाणपत्र पाएका पारलैङ्गिक व्यक्तिहरूले उक्त देशमा लैङ्गिक पहिचान कायम हुने गरी विवरण संशोधन गर्न असमर्थ रहेमा वा कुनै कारणवश् त्यस देशमा गई संशोधन गर्न सक्ने अवस्था नभएमा निवेदकले उक्त विदेशी शैक्षिक संस्थाको नेपालमा समकक्षता प्रमाणपत्र उतार गरि निजले शैक्षिक प्रमाणपत्रका रूपमा उपयोग गर्न पाउने गरी त्यस समकक्षता प्रमाणपत्र लैङ्गिक पहिचान अनुसार कायम गर्न सकिनेछ ।

**१५. परिचयपत्र सम्बन्धी व्यवस्था :** (१) पारलैङ्गिक व्यक्तिहरूलाई लक्षित गरी प्रदान गरिने सेवा, सुविधा तथा विशेष व्यवस्था प्राप्त गर्नका लागि पारलैङ्गिक परिचयपत्रको व्यवस्था गरिएको छ ।

(२) यस निर्देशिका बमोजिम लैङ्गिक पहिचान कायम गरेका व्यक्तिहरूले पारलैङ्गिक परिचयपत्र प्राप्त गर्न सक्नेछ ।

(३) दफा ९ को उपदफा (३) बमोजिम जारी भएको सिफारिसका आधारमा वडा कार्यालयले नीज व्यक्तिले लैङ्गिक विवरण 'महिला' संशोधन गरी 'पुरुष' कायम गरेको आधारमा 'पारलैङ्गिक पुरुष' तथा लैङ्गिक विवरण 'पुरुष' संशोधन गरी 'महिला'

कायम गरेको आधारमा 'पारलैङ्गिक महिला' उल्लेख गरी परिचयपत्रका लागि सिफारिस जारी गर्न सक्नेछ ।

(४) उप-दफा (३) बमोजिमको सिफारिसका आधारमा नेपाल सरकारले पारलैङ्गिक परिचयपत्र प्रदान गर्नेछ ।

## परिच्छेद ४
## विविध

**१६. निर्देशन समिति :** (१) यस निर्देशिका बमोजिमको अधिकार र संरक्षण सम्बन्धी काम कार्यवाहीमा समन्वय, रेखदेख, प्रबर्द्धन गर्ने तथा सो सम्बन्धी काममा निर्देशन दिने काम समेतको लागि नेपाल सरकारले निर्देशन समिति गठन गर्न सक्नेछ ।

(२) निर्देशन समिति सम्बन्धी व्यवस्था तोकेबमोजिम हुनेछ ।

(३) नेपाल सरकारले व्यवस्था गरेबमोजिम प्रदेश तथा स्थानीय तहमा पनि निर्देशन समिति गठन गर्न सकिन्छ ।

**१७. अधिकार प्रचलन गराउन जिल्ला अदालतमा निवेदन दिन सक्ने :** (१) यस निर्देशिका बमोजिमको अधिकार प्रचलन वा यस निर्देशिका प्रतिको दायित्व पूरा गराउन नीज व्यक्ति रहे बसेको जिल्लाको जिल्ला अदालत समक्ष सोझै निवेदन दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम निवेदन पर्न आएमा सम्बन्धित जिल्ला अदालतले सोसम्बन्धमा आवश्यक जाँचबुझ गरी नीज व्यक्तिको अधिकारको प्रचलन गर्ने वा नीज व्यक्तिप्रतिको दायित्व पूरा गराउने सम्बन्धमा सम्बन्धित निकायका नाममा उपयुक्त आदेश जारी गर्न सक्नेछ ।

**अनुसूची — १**

दफा ९ को उपदफा (१) र (२) सँग सम्बन्धित

मिति :....................

श्री वडा अध्यक्ष्यज्यू,
....................नं. वडा कार्यालय,
.................... नगरपालिका / गाउँपालिका,
.................... (ठेगाना) ।

<u>विषय : सर्वोच्च अदालतद्वारा जारी गरिएको पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८ बमोजिम लैङ्गिक पहिचान कायम गरिपाऊँ ।</u>

महोदय,

उपरोक्त सम्बन्धमा म ................... प्रदेश ................... जिल्ला ................... मनपा/उपमनपा/नपा/गापा ................... वडा बस्ने निवेदक पारलैङ्गिक महिला / पारलैङ्गिक पुरुष हुँ । मलाई जन्मँदा पुलिङ्गी इङ्गित / स्त्रीलिङ्गी इङ्गित गरिएको थियो र मेरो स्वःअनुभूतीको लैङ्गिक पहिचान महिला / पुरुष हो । म आफ्नो लैङ्गिक पहिचान अनुसारकै परिचय स्थापित गरी समाजमा आफू चिनिन र चिनाउन चाहन्छु ।

म देहाय अनुसार मेरो लैङ्गिक पहिचान कायम हुने गरी मेरा सबै वैयक्तिक कागजातहरू संशोधन गर्न चाहन्छु ।

| | संशोधन गर्न चाहेको | कायम गर्न चाहेको |
|---|---|---|
| लैङ्गिक विवरण | | |
| नाम | | |

*(निवेदकले लैङ्गिक विवरणमा मात्र संशोधन माग गरेको छ भने नामको महलमा* ***X*** *चिन्ह लगाउने ।)*

मैले हालसम्म प्राप्त गरेको सबै वैयक्तिक कागजातहरू देहाय बमोजिम छन् :

| क.सं. | वैयक्तिक कागजात | नम्बर |
|---|---|---|
| १. | नेपाली नागरिकताको प्रमाणपत्र | XX-XX-XX-XXXXX |

| | | |
|---|---|---|
| २. | राहदानी | XXXXXXXX |
| ३. | एस.एल.सी लब्धांक पत्र | XXXXXXXX |
| ४. | एस.एल.सी चारित्रिक प्रमाणपत्र | XXXX |
| ५. | जन्म दर्ता प्रमाणपत्र | XXXX |
| | (आवश्यकता अनुसार थप गर्ने) | |

यस सूचीमा सूचिकृत कागजातहरूको विवरण सही छन् र मसँग भएका सम्पूर्ण कागजातहरू यहाँ सूचिकृत गराएको छु । यो व्यहोरा झुट्टा भएमा कानून बमोजिम सहुँला बुझाउँला ।

संलग्न :- सूचिकृत वैयक्तिक कागजातहरूको प्रतिलिपि एक प्रति ।

निवेदकको नाम :-

सही :-

दा. ब.

**अनुसूची — २**

दफा ९ को उपदफा (३) सँग सम्बन्धित

सिफारिस ढाँचा

नेपाल सरकार
....................प्रदेश
.................... नगरपालिका / गाउँपालिका
वडा .................... ।

विषय : सर्वोच्च अदालतद्वारा जारी गरिएको पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८ बमोजिम जारी गरिएको सिफारिस ।

सिफारिस नं : ...................

मिति : ...................

................... प्रदेश ................... जिल्ला ................... मनपा/उपमनपा/नपा/गापा ................... वडा बस्ने निवेदकले पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८ को दफा (१) र (२) बमोजिम निवेदकले म पारलैङ्गिक महिला / पारलैङ्गिक पुरुष रहेको, मलाई जन्मँदा पुलिङ्गी इङ्गित / स्त्रीलिङ्गी इङ्गित गरिएको थियो र मेरो स्वःअनुभूतीको लैङ्गिक पहिचान महिला / पुरुष रहेको, म आफ्नो लैङ्गिक पहिचान अनुसारकै परिचय स्थापित गरी समाजमा आफू चिनिन र चिनाउन चाहन्छु भन्ने स्वःघोषणाका साथ निवेदन पेश गरेको हुनाले निर्देशिकाको दफा (३) बमोजिम यो सिफारिस जारी गरिदिएको छ ।

निवेदकको माग अनुसार नीजको सबै वैयक्तिक कागजातहरू संशोधन गर्न गराउन सबै सम्बन्धित निकायहरूमा आदेशानुसार अनुरोध छ ।

| | संशोधन गर्न चाहेको | कायम गर्न चाहेको |
|---|---|---|
| लैङ्गिक विवरण | | |
| नाम | | |

*(निवेदकले लैङ्गिक विवरणमा मात्र संशोधन माग गरेको छ भने नामको महलमा* ***X*** *चिन्ह लगाउने ।)*

नागरिकता नं :-
जन्म दर्ता नं (नागरिकता प्राप्त गरिनसकेको भएमा) :-

वडा अध्यक्षको सही
वडा कार्यालयको छाप

***अर्को पानामा***

सर्वोच्च अदालतद्वारा जारी गरिएको पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८ बमोजिम लैङ्गिक पहिचान कायम

गर्न विवरण संशोधनका लागि मिति .................... को सिफारिस नं .................... रहेको निवेदकले संशोधनका लागि पेश गरेको वैयक्तिक कागजातहरूको सूची ।

*(सम्बन्धित निकायले सिफारिस अनुसार निवेदकको वैयक्तिक कागजातमा संशोधन गरि अर्को जारी गरिसकेपछि यस सूचीको सम्बन्धित महलमा सम्बन्धित अधिकारीको दस्तखत गर्ने र कार्यालयको छाप लगाउने ।)*

| क्र.सं. | वैयक्तिक कागजात | नम्बर | सम्बन्धित निकाय | दस्तखत | छाप |
|---|---|---|---|---|---|
| १ | नागरिकता प्रमाणपत्र | XX-XX-XX-XXXXX | जिल्ला प्रशासन कार्यालय, .... । | | |
| २ | राहदानी | XXXXXXXX | राहदानी विभाग, काठमाडौं । | | |
| ३ | एस.एल.सी लब्धांक पत्र | XXXXXXXX | राष्ट्रिय परिक्षा बोर्ड, भक्तपुर । | | |
| ४ | एस.एल.सी चारित्रिक प्रमाणपत्र | XXXX | श्री .... माध्यमिक विद्यालय, .... । | | |
| ५ | जन्म दर्ता प्रमाणपत्र | XXXX | .... नगर/गाउँ कार्यपालिकाको कार्यालय, .... । | | |
| | (आवश्यकता अनुसार थप गर्ने) | | | | |

उपरोक्त सूचीमा सूचिकृत वैयक्तिक कागजातहरूको विवरण सही छन् र मसँग भएका सम्पूर्ण कागजातहरू यहाँ सूचिकृत गराएको छु । यो व्यहोरा झुट्टा भएमा कानून बमोजिम सहुँला बुझाउँला ।

निवेदकको नाम :- वडा अध्यक्षको सही :-

सही :- वडा कार्यालयको छाप :-

**नमूना निर्देशिका मस्यौदा गर्ने व्यक्ति :** रिट निवेदक रुक्शना कपाली



नेपाल संवत् ११४२ चौला ११, २०७८ चैत्र १५ ।